# हार्दिक शुभकामना



श्रीकृष्ण घिमिरे स्मृति समाजद्वारा घिमिरे वंशावली प्रकाशन हुन लागेको सु-समाचारले खुशी लागेको छ। आफ्नो उद्गम स्थलको खोजी नीति गर्नु, आफ्नो वंशका मूल पुरुषको अन्वेषण गर्नु र आफ्ना पुर्खाहरूमा भएका विभिन्न क्षेत्रका प्रतिभाहरुको सही लेखा राख्नु र यथोचित कदर गर्नु साह्रै उत्तम प्रयास हो। वंशावली तैयार गर्दा जो सत्य र तथ्य हो सो को सही उल्लेख हुनु जरुरी छ, साथै वंशका विशिष्ट योगदान गरेका व्यक्तिहरुको चरित्रलाई कत्ति नघटाई नबढाई इमान्दारी साथ निष्पक्ष उल्लेख हुनुपर्दछ। कुनै पनि प्रयास आफैमा पूर्ण हुँदैन। त्यसमा इमान्दारी साथ प्रयत्न हुँदा हुँदै पनि कतिपय त्रुटि रहन जान्छन्। यस्ता कुराबाट यस कार्यमा संलग्न हामीहरु हतोत्साहित हुनु हुँदैन। हामी पछि पनि हामी मध्ये कुनै बन्धुले फेरि पनि वंशावली तैयार पार्ने जमर्को गर्दा आजका त्रुटिहरु सच्चिन जाने पुनः अवसर प्राप्त हुन्छ। यसपटकको हाम्रो वंशावली कतिपय कुरामा अपूरो भएको हामी मध्ये धेरैलाई थाहा छ। त्यसको बावजूद त्यस सत्प्रयासलाई साधुवाद दिनुपर्दछ। यो हाम्रो यस पटकको श्री कृष्ण घिमिरे स्मृति समाजद्वारा प्रकाशन हुन लागेको वंशावली अवश्य पनि पहिलेको प्रयास भन्दा धेरै सुधारिएको छ, जस्तो हाम्रो धारणा छ। यस वंशावली प्रकाशन गर्नमा परिश्रमरत सम्पादक मण्डल समेत सबैलाई हाम्रो तर्फबाट हार्दिक धन्यवाद चढाउँदछौं। हाम्रो मंगलमय शुभकामना छ।

भाद्र २८ गते २०५६ साल
भुवन-भवन नं. ३
पिपलबोट, वार्ड नं. ११
त्रि.न.पा. घोराही बजार, दाङ

विनीत,
भरतमणि शर्मा घिमिरे
शारदादेवी शर्मा घिमिरे

नाम : भरतमणि शर्मा घिमिरे
जन्मतिथि : अक्टुबर १९२७
जन्मस्थान : त्रि.न.न.पा.-३ घनीवगिया, दाङ
शिक्षा : स्नातकोत्तर (वि.एच.यू. वाराणसी, भारत)
ठेगाना : दाङ लालमटिया- ६, मौरीघाट
राजनीति जीवनी : नेपाली छात्रसंघको संस्थापक सदस्य (१९४५)
- नेपाली कांग्रेसको संस्थापक सदस्य (१९४६)
- ने.का. सशस्त्र क्रान्तिको पश्चिम नेपालको कमाण्डर
- २००७ सालको क्रान्तिपछिको राणा कांग्रेस मन्त्रीमण्डल (१९५८) मा
- ने.का. तर्फबाट मन्त्रीमण्डलको सदस्य (हालसम्मको सबैभन्दा कम
- उमेरको मन्त्री २३ वर्ष, सन् १९५०)
- नेपालको प्रथम पार्लियामेन्टमा उपल्लो सभा सदस्य (१९५३)
- सन् १९५६ देखि १९७१ सम्म राजसभासदस्य
- सन् १९८६ देखि १९९० सम्म राष्ट्रिय पंचायत सदस्य
- सामाजिक जीवन : सन् १९८० देखि १९८५ सम्म सामाजिक सेवा राष्ट्रिय समन्वय परिषद्को सदस्य
- सन् १९८६ देखि नेपाल जर्मनी मैत्री तथा सांस्कृतिक संघको अध्यक्ष संस्थापक भई कार्य गरिरहेको
- आफ्नै लगानी र सक्रियतामा मौरीघाटमा मा.वि. स्कूल स्थापना गरको।

विदेश भ्रमण : जर्मनी, वेल्जियम, नेदरल्याण्ड, बेलायत, फ्रान्स, इटली, स्वीट्जरलैण्ड, इजरायल, इरान, संयुक्त राज्य अमेरिका, भारत

नाम : श्रीमती शारदादेवी घिमिरे
जन्मतिथि : सम्वत् १९८७
जन्मस्थान : तौलिहवा
स्थान : त्रि.न.न.पा. ३ घनिवगिया दाङ
विवाह : २००३ (वि.सं.) १३ वर्षको उमेरमा